॥ श्रीहरिः ॥

# श्रीहनुमानचालीसा

## नेपाली भावार्थसहित

त्वमेव माता च पिता त्वमेव
त्वमेव बन्धुश्च सखा त्वमेव।
त्वमेव विद्या द्रविणं त्वमेव
त्वमेव सर्वं मम देवदेव॥

गीताप्रेस, गोरखपुर

॥ श्रीहरिः ॥

# निवेदन

**‘अतुलितबलधामं हेमशैलाभदेहं दनुजवनकृशानुं ज्ञानिनामग्रगण्यम्।**
**सकलगुणनिधानं वानराणामधीशं रघुपतिप्रियभक्तं वातजातं नमामि॥’**

‘अतुल बलका धाम, सुनको पर्वत (सुमेरु) झैं कान्तियुक्त शरीर हुनुभएका, दैत्यरूपी वनलाई ध्वंस गर्नको लागि अग्निरूप, ज्ञानीहरूमा अग्रगण्य, सम्पूर्ण गुणहरूका निधान, बाँदरहरूका स्वामी, श्रीरघुनाथजीका प्रियभक्त पवनपुत्र हनुमान्‌जीलाई म प्रणाम गर्दछु।’

बितेका कैयौं वर्षदेखि यस्तो इच्छा थियो कि श्रीहनुमानचालीसाको व्याख्यासहित भावार्थ प्रकाशित गर्नुपर्‍यो। वास्तवमा श्रीहनुमानचालीसा परम आराध्य श्रीमारुतनन्दनको महिमाको संक्षेपमा गुणगान हो। यसको भाषा यति सरल छ कि यो सबैको लागि बोधगम्य छ, फेरि पनि भक्तजनहरूको इच्छानुसार व्याख्यासहित यसको भावार्थ प्रकाशित गरिएको छ।

भन्दछन् कि जो कार्य औषधिबाट हुँदैन सो आशीर्वादबाट हुन्छ। श्रीहनुमानचालीसा औषधि र आशीर्वाद दुवै हो। औषधिहरू जडी-बुटी र रसायन पनि हो। यसैले यो सर्वोपयोगी छ। यसको

पाठले लौकिक र पारलौकिक दुवै प्रकारका सिद्धिहरू प्राप्त हुन्छन्। संसारमा जति पनि कठिन-भन्दा-कठिन प्रकारका कार्य छन्, तिनीहरू श्रीहनुमान्‌जीको कृपाले सहजै प्राप्त हुन्छन्—'**दुर्गम काज जगत के जेते। सुगम अनुग्रह तुम्हरे तेते॥**' यसको साथै जीवनको परम फल जन्म-जन्मान्तरका पापहरूबाट निवृत्ति, भगवत्प्राप्ति तथा अन्तकालमा सालोक्य मुक्ति अर्थात् साकेत धाम प्राप्त हुन्छ—'**तुम्हरे भजन राम को पावै। जनम जनम के दुख बिसरावै॥ अंत काल रघुबर पुर जाई। जहाँ जन्म हरि-भक्त कहाई॥**' यो सबै कपोलकल्पित होइन। यसका साक्षी गौरीपति भगवान् सदाशिव शङ्कर स्वयं हुनुहुन्छ—'**जो यह पढ़ै हनुमान चलीसा। होय सिद्धि साखी गौरीसा॥**'

यस प्रकार श्रीहनुमानचालीसाको पाठ गर्नाले एकसाथ समस्त वस्तुहरू सरलता र सुगमताले प्राप्त हुन्छन्। भाषा र आकारका दृष्टिले यो अत्यन्त सरल एवं लघु छ तथा देशका करोडौं-करोड स्त्री-पुरुष, बाल-वृद्ध, धनी-गरीब, अल्पज्ञ-विद्वान्—सबैको दैनिक आराधनाको प्रथम सोपान पनि हो। आशा छ, भक्तजन यसबाट लाभान्वित हुनेछन्।

**—प्रकाशक**



॥ श्रीहनूमते नमः ॥

# श्रीहनुमानचालीसा

**दोहा— श्रीगुरु चरन सरोज रज, निज मनु मुकुरु सुधारि।**
**बरनउँ रघुबर बिमल जसु, जो दायकु फल चारि॥ १ ॥(क)**

**भावार्थ—**श्रीगुरुदेवका चरण-कमलको धूलोले आफ्नो मनरूपी ऐनालाई निर्मल पारेर मैले श्रीरघुवरको त्यस सुन्दर यशको वर्णन गर्दछु, जसले चारवटै फल (धर्म, अर्थ, काम र मोक्ष) लाई दिन सक्दछ।

**व्याख्या—**मनरूपी ऐनामा शब्द-स्पर्श-रूप-रस-गन्धरूपी विषयहरूको पाँच पत्र (खात) वाला जुन मयल रहेको छ र साधारण रजले सफा हुनेवाला छैन। अत: यसलाई स्वच्छ गर्नको लागि '**श्रीगुरु चरन सरोज रज**' को आवश्यकता पर्दछ। साक्षात् भगवान् शङ्कर नै यहाँ गुरुस्वरूपमा

वर्णित हुनुहुन्छ—‘**गुरुं शङ्कररूपिणम्।**’ भगवान् शङ्करको कृपाले नै रघुवरको सुयशको वर्णन गर्न सम्भव छ।

**बुद्धिहीन तनु जानिके, सुमिरौं पवन-कुमार।**
**बल बुधि बिद्या देहु मोहिं, हरहु कलेस बिकार॥ १ ॥ (ख)**

**भावार्थ**—हे पवनकुमार! मैले आफूलाई शरीर र बुद्धिले हीन जानेर हजुरको स्मरण (ध्यान) गरिरहेको छु। हजुरले मलाई बल, बुद्धि र विद्या प्रदान गरेर मेरा समस्त कष्ट र दोषहरूलाई टाढै भगाउने कृपा गर्नुहोस्।

**व्याख्या**—मैले आफूलाई देही नमानी देह मानेर बसेको छु, यसकारण बुद्धिहीन छु र पाँचवटै प्रकारका क्लेश (अविद्या, अस्मिता, राग, द्वेष एवं अभिनिवेश) तथा षट्विकारहरू (काम, क्रोध, लोभ, मोह, मद, मात्सर्य) बाट संतप्त छु; अतः हजुर-जस्ता सामर्थ्यवान्

**‘अतुलितबलधामम्’ ‘ज्ञानिनामग्रगण्यम्’** सँग बल, बुद्धि एवं विद्याको याचना गर्दछु तथा समस्त क्लेश एवं विकारहरूबाट मुक्ति पाउन चाहन्छु।

## चौपाई

**जय हनुमान ज्ञान गुन सागर। जय कपीस तिहुँ लोक उजागर॥ १ ॥**

**भावार्थ**—ज्ञान र गुणहरूका सागर श्रीहनुमान्‌जीको जय होस्। तिनै लोकहरू (स्वर्गलोक, भूलोक, पाताललोक) लाई आफ्नो कीर्तिले प्रकाशित गर्ने कपीश्वर श्रीहनुमान्‌जीको जय होस्।

**व्याख्या**—श्रीहनुमान्‌जी कपिरूपमा साक्षात् शिवजीको अवतार हुनुहुन्छ, यसैले यहाँ उहाँलाई कपीश भनिएको हो।

यहाँ हनुमान्‌जीको स्वरूपको तुलना सागरसँग गरिएको छ। सागरका दुइवटा विशेषता छन्—एउटा त सागरसँग भण्डारको तात्पर्य हो र अर्को

सबै वस्तुहरूको उसमा परिसमाप्ति हुन्छ। श्रीहनुमन्तलालजी पनि ज्ञानका भण्डार हुनुहुन्छ र उहाँमा समस्त गुण समाहित छन्। कुनै विशिष्ट व्यक्तिको मात्र जय-जयकार गर्ने गरिन्छ। श्रीहनुमान्जी ज्ञानीहरूमा अग्रगण्य, सकल गुणहरूका निधान तथा तीनै लोकहरूलाई प्रकाशित गर्नेवाला हुनुहुन्छ, अतः यहाँ उहाँको जय-जयकार गरिएको छ।

**राम दूत अतुलित बल धामा। अंजनि-पुत्र पवनसुत नामा॥ २॥**

**भावार्थ**—हे अतुलित बलका भण्डारघर रामदूत हनुमान्जी! हजुर लोकहरूमा अञ्जनी-पुत्र र पवनसुतको नामले विख्यात हुनुहुन्छ।

**व्याख्या**—सामान्यतः जब कसैलाई कुनै कार्य सिद्ध गर्नुछ भने उसको सुपरिचित, इष्ट अथवा पूज्यको नाम लिएर उससँग मिलेपछि कार्यको सिद्धि हुनलाई विलम्ब लाग्दैन। अतः यहाँ श्रीहनुमान्जीलाई

प्रसन्न गर्नको लागि भगवान् श्रीराम, माता अञ्जनी तथा पिता पवनदेवको नाम लिइएको छ।

**महाबीर बिक्रम बजरंगी। कुमति निवार सुमति के संगी॥ ३॥**

**भावार्थ**—हे महावीर! हजुर वज्रसमान शरीर हुनुभएका र पराक्रमी हुनुहुन्छ। हजुर कुमति (दुर्बुद्धि) को निवारण गर्ने तथा सद्बुद्धि धारण गर्नेहरूका लागि साथी (सहायक) हुनुहुन्छ।

**व्याख्या**—कसैलाई आफूतर्फ आकर्षित गर्नको लागि सर्वप्रथम उसका गुणहरूको वर्णन गर्नुपर्छ। अतः यहाँ हनुमान्‌जीका गुणहरूको वर्णन गरिएको छ। श्रीहनुमन्तलालजी त्याग, दया, विद्या, दान तथा युद्ध—यी पाँच प्रकारका वीरतापूर्ण कार्यहरूमा विशिष्ट स्थान राख्नुहुन्छ, यसकारण हजुर महावीर हुनुहुन्छ। अत्यन्त पराक्रमी र अजेय हुनाको कारण हजुर

विक्रम र बजरङ्गी हुनुहुन्छ। प्राणि मात्रका परम हितैषी हुनाको कारण उनीहरूलाई विपत्तिहरूबाट बचाउनको लागि उनीहरूका कुमतिहरूलाई नष्ट गर्नुहुन्छ तथा जो सुमतिवाला छ, उसको सहायक हुनुहुन्छ।

**कंचन बरन बिराज सुबेसा। कानन कुंडल कुंचित केसा॥ ४॥**

**भावार्थ**—हजुरको सुवर्णको समान कान्तिमान् अङ्गमा सुन्दर वेश-भूषा, कानमा कुण्डल र घुमाउरा (घुम्रे) केश सुशोभित भइरहेका छन्।

**व्याख्या**—यस चौपाईमा श्रीहनुमन्तलालजीको सुन्दर स्वरूपको वर्णन भएको छ। हजुरको देह स्वर्ण-शैल आभाको सदृश सुन्दर छ र कानमा कुण्डल सुशोभित छन्। उपर्युक्त दुवै वस्तुहरूले र घुम्रे कपालबाट हजुर अत्यन्त सुन्दर लाग्नुहुन्छ।

**हाथ बज्र औ ध्वजा बिराजै। काँधे मूँज जनेऊ साजै॥ ५॥**

**भावार्थ**—हजुरको हातमा वज्र (वज्रको समान कठोर गदा) र (धर्मको प्रतीक) ध्वजा विराजमान छ तथा काँधमा मुञ्जको जनै सुशोभित छ।

**व्याख्या**—सामुद्रिक शास्त्रका अनुसार वज्र एवं ध्वजाको चिह्न सर्वसमर्थ महानुभाव एवं सर्वत्र विजयश्री प्राप्त गर्नेको हातमा हुन्छ र काँधमा मुञ्जको जनै नैष्ठिक ब्रह्मचारीको लक्षण हो। श्रीहनुमान्जी यी सबै लक्षणहरूबाट सम्पन्न हुनुहुन्छ।

**संकर सुवन केसरीनंदन। तेज प्रताप महा जग बंदन॥ ६ ॥**

**भावार्थ**—हजुर भगवान् शङ्करका अंश (अवतार) र केशरीपुत्रको नामबाट विख्यात हुनुहुन्छ। हजुर (अतिशय) तेजस्वी, महान् प्रतापी र समस्त जगत्का वन्दनीय हुनुहुन्छ।

**व्याख्या**—प्राणि मात्रको लागि तेजको उपासना सर्वोत्कृष्ट छ। तेजमा

नै जीवन छ। अन्तकालमा देहाकाशबाट तेज नै निस्केर महाकाशमा विलीन हुन्छ।

**बिद्यावान गुनी अति चातुर। राम काज करिबे को आतुर॥ ७॥**

**भावार्थ—**हजुर सबै विद्याहरूबाट सम्पन्न, गुणवान् र अत्यन्त चतुर हुनुहुन्छ। हजुर भगवान् श्रीरामको कार्य (संसारको कल्याणको कार्य) पूर्ण गर्नको लागि तत्पर (उत्सुक) हुनुहुन्छ।

**व्याख्या—**श्रीहनुमन्तलालजी समग्र विद्याहरूमा निष्णात (विशेषज्ञ) हुनुहुन्छ र समस्त गुणहरूलाई धारण गर्नाले 'सकलगुणनिधान' हुनुहुन्छ। उहाँ श्रीरामको कार्य–सम्पादन–हेतु अत्यन्त आतुरता (तत्परता, व्याकुलता) को भाव राख्नेवाला हुनुहुन्छ। किनकि '**राम काज लगि तव अवतारा**' ले यही उद्‌घोषित गर्दछ कि श्रीहनुमान्‌जीको जन्मको मुख्य उद्देश्य भगवान्

श्रीरामको हितकार्यहरूको सम्पादन गर्नुमात्रै हो।

ब्रह्माका दुई शक्तिहरू छन्—पहिलो स्थित्यात्मक (स्थितिपरक) र अर्को गत्यात्मक (गतिपरक)। हनुमन्तलालजी गत्यात्मक क्रियाशक्ति हुनुहुन्छ अर्थात् निरन्तर रामकाजमा निकट रहनुहुन्छ।

**प्रभु चरित्र सुनिबे को रसिया। राम लखन सीता मन बसिया॥ ८॥**

**भावार्थ**—हजुर प्रभु श्रीराघवेन्द्रको चरित्र सुन्नको लागि सदा लालायित र उत्सुक (कथारसको आनन्दमा निमग्न) रहनुहुन्छ। श्रीराम, लक्ष्मण र माता सीताजी सधैं हजुरको हृदयमा विराजमान रहनुहुन्छ।

**व्याख्या—'राम लखन सीता मन बसिया'**—यसको अर्को अर्थ यो पनि हो कि भगवान् श्रीरामजी, लक्ष्मणजी एवं भगवती सीताजीको हृदयमा हजुर रहनुहुन्छ।

**सूक्ष्म रूप धरि सियहिं दिखावा। बिकट रूप धरि लंक जरावा॥ ९॥**

**भावार्थ**—हजुरले अत्यन्तै सानो रूप धारण गरेर माता सीताजीलाई देखाउनुभयो र अत्यन्त विकराल रूप धारण गरेर लङ्का नगरीलाई जलाउनुभयो।

**व्याख्या**—श्रीहनुमान्जी अष्टसिद्धिहरूले सम्पन्न हुनुहुन्छ। उहाँमा सूक्ष्मातिसूक्ष्म एवं अति विस्तीर्ण दुवै रूप धारण गर्ने विशेष क्षमता विद्यमान छ। उहाँ शिव (ब्रह्म) को अंश हुनाको कारण तथा अत्यन्त सूक्ष्म रूप धारण गर्नलाई अविज्ञेय (जान्न नसकिने) पनि हुनुहुन्छ— '**सूक्ष्मत्वात्तदविज्ञेयम्**' साथै काम, क्रोध, लोभ, मोह, मद, अहङ्कार, दम्भ आदि भयावह एवं विकराल दुर्गुणहरूबाट युक्त लङ्कालाई विशेष पराक्रम एवं विकट रूपबाट नै भस्मीभूत गर्न सम्भव थियो। अतः

श्रीहनुमान्जीले भिन्दै परिस्थितिमा विराट्रूप धारण गर्नुभयो।

**भीम रूप धरि असुर सँहारे। रामचंद्र के काज सँवारे॥ १०॥**

**भावार्थ**—हजुरले अत्यन्त विशाल र भयानक रूप धारण गरेर राक्षसहरूको संहार गर्नुभयो र विविध प्रकारले भगवान् श्रीरामचन्द्रका कार्यहरूलाई पूरा गर्नुभयो।

**व्याख्या**—श्रीहनुमान्जी परब्रह्म रामको क्रियाशक्ति हुनुहुन्छ। अतः त्यही शक्तिद्वारा उहाँले भयङ्कर रूप धारण गरेर असुरहरूलाई ध्वंस गर्नुभयो। भगवान् श्रीरामको कार्यमा लेशमात्र पनि अपूर्णता श्रीहनुमान्जीको लागि सहनयोग्य हुँदैनथ्यो। तब त '**राम काजु कीन्हें बिनु मोहि कहाँ बिश्राम**' को भाव आफ्नो हृदयमा निरन्तर सजाउँदै उहाँ प्रभु श्रीरामको कार्य सँभाल्न सदा क्रियाशील रहनुहुन्थ्यो (अथवा रहनुहुन्छ)।

**लाय सजीवन लखन जियाये। श्रीरघुबीर हरषि उर लाये॥ ११ ॥**

**भावार्थ—**हजुरले सञ्जीवनी बुटी ल्याएर लक्ष्मणजीलाई बचाउनुभयो। यस कार्यबाट प्रसन्न भएर भगवान् श्रीरामले हजुरलाई हृदयमा लगाउनुभयो।

**व्याख्या—**श्रीहनुमान्जीलाई उहाँको स्तुतिमा श्रीलक्ष्मण-प्राणदाता पनि भनिएको छ। श्रीसुषेण वैद्यको परामर्शअनुसार हजुर द्रोणाचल पर्वतमा जानुभयो र अनेक व्यवधान तथा कष्टहरू हुँदा पनि समयभित्रै सञ्जीवनी बुटी ल्याएर श्रीलक्ष्मणजीको प्राणको रक्षा गर्नुभयो। विशेष स्नेह र प्रसन्नताको कारण नै कसैलाई हृदयमा लगाइने गरिन्छ।

अंशको पूर्ण परिणति अंशीबाट प्राप्त भएपछि नै हुन्छ, जसलाई हनुमन्तलालजीले चरितार्थ गर्नुभयो।

**रघुपति कीन्ही बहुत बड़ाई। तुम मम प्रिय भरतहि सम भाई॥ १२॥**

**भावार्थ**—भगवान् श्रीराघवेन्द्रले हजुरको ठूलो प्रशंसा गर्नुभयो। उहाँले भन्नुभयो कि तिमी भाइ भरतसमान नै मेरा प्रिय छौ।

**व्याख्या**—श्रीरामचन्द्रजीले हनुमान्‌जीप्रति आफ्नो प्रियताको तुलना भरतजीप्रतिको आफ्नो प्रीतिसँग गरेर हनुमान्‌जीलाई विशेषरूपले महिमामण्डित (महिमान्वित) गर्नुभयो। भरतजीसमान रामजीका प्रिय कुनै छैनन्; किनकि समस्त जगत्‌द्वारा आराधित श्रीराम स्वयं भरतजीको जप गर्नुहुन्छ—

**भरत सरिस को राम सनेही। जगु जप राम रामु जप जेही॥**

**सहस बदन तुम्हरो जस गावैं। अस कहि श्रीपति कंठ लगावैं॥ १३॥**

**भावार्थ**—हजार मुख भएका शेषजी सदा तिम्रो यशको गान

गर्दछन्—यस्तो भनेर लक्ष्मीपति विष्णुस्वरूप भगवान् श्रीरामले हजुरलाई आफ्नो हृदयमा लगाउनुभयो।

**व्याख्या**—श्रीहनुमान्जीको चतुर्दिक् (चारैवटा दिशामा) प्रशंसा हजारौं मुखबाट हुँदै रहोस्—यस्तो भन्दै भगवान् श्रीरामले श्रीहनुमान्जीलाई गलामा लगाउनुभयो।

**सनकादिक ब्रह्मादि मुनीसा। नारद सारद सहित अहीसा॥ १४॥**
**जम कुबेर दिगपाल जहाँ ते। कबि कोबिद कहि सके कहाँ ते॥ १५॥**

**भावार्थ**—श्रीसनक, सनातन, सनन्दन, सनत्कुमार आदि मुनिगण, ब्रह्मा आदि देवगण, नारद, सरस्वती, शेषनाग, यमराज, कुबेर तथा समस्त दिक्पाल पनि जब हजुरको यश गाउन असमर्थ छन् भने फेरि (सांसारिक) विद्वान् तथा कवि त्यसलाई कसरी गाउन सक्छन्? अर्थात्

हजुरको यश अवर्णनीय छ।

**व्याख्या**—उपमाहरूद्वारा कुनै वस्तुको आंशिक ज्ञान हुन सक्दछ, पूर्ण ज्ञान होइन। कवि-कोविद् उपमाको नै आश्रय लिने गर्दछन्।

श्रीहनुमान्‌जीको महिमा अनिर्वचनीय (उल्लेख गर्न नसकिने) छ। अतः वाणीद्वारा उसको वर्णन गर्न सम्भव छैन।

**तुम उपकार सुग्रीवहिं कीन्हा। राम मिलाय राज पद दीन्हा॥ १६॥**

**भावार्थ**—हजुरले बाँदरराज सुग्रीवको महान् उपकार गर्नुभयो तथा उनलाई भगवान् श्रीरामसँग भेट गराएर [बालिवधपछि] राजपद प्राप्त गराउनुभयो।

**व्याख्या**—राजपदमा सुकण्ठको नै स्थिति हुन्छ र उसको कण्ठ नै सुकण्ठ हुन्छ, जसको कण्ठमा सदैव श्रीरामको वास हुन्छ। यो कार्य

श्रीहनुमान्‌जीको कृपाले नै सम्भव भयो।

सुग्रीव बालिको भयले व्याकुल रहन्थे र उनको सर्वस्व हरण गरिएको थियो। भगवान् श्रीरामले उनको गुमेको राज्य फिर्ता दिलाउनुभयो तथा उनलाई भयरहित बनाउनुभयो। श्रीहनुमान्‌जीले नै सुग्रीवको मित्रता भगवान् रामसँग गराउनुभयो।

**तुम्हरो मंत्र बिभीषन माना। लंकेस्वर भए सब जग जाना॥ १७॥**

**भावार्थ**—हजुरको परममन्त्र (परामर्श) लाई विभीषणले ग्रहण गरे। यसकारण उनी लङ्‌काको राजा भए। यस कुरालाई सारा संसारले जानेको छ।

**व्याख्या**—श्रीहनुमान्‌जी महाराजले विभीषणजीलाई शरणागत हुनलाई मन्त्र दिनुभएको थियो, जसको फलस्वरूप उनी लङ्‌काका राजा भए।

**जुग सहस्त्र जोजन पर भानू। लीलिल्यो ताहि मधुर फल जानू॥ १८॥**

**भावार्थ**—हे हनुमान्‌जी! [जन्मको समयमै] हजुरले दुई हजार योजन टाढाको सूर्यलाई [कुनै] मीठो फल सम्झेर निल्नुभएको थियो।

**व्याख्या**—श्रीहनुमान्‌जीलाई जन्मदेखि नै आठ सिद्धिहरू प्राप्त थिए। उहाँ जति अग्लो ठाउँमा पनि उड्न सक्नुहुन्थ्यो, जति सानो या ठूलो शरीर बनाउन पनि सक्नुहुन्थ्यो तथा मनुष्यरूप अथवा बाँदररूप धारण गर्ने उहाँमा क्षमता थियो।

**प्रभु मुद्रिका मेलि मुख माहीं। जलधि लाँघि गये अचरज नाहीं॥ १९॥**

**भावार्थ**—हजुर आफ्ना स्वामी श्रीरामचन्द्रजीको औंठीलाई मुखमा राखेर [सय योजन विस्तृत] महासमुद्रलाई नाघ्नुभयो। [हजुरको अपार महिमालाई देख्दा] यसमा कुनै आश्चर्यको कुरा छैन।

**व्याख्या**—श्रीहनुमान्‌जी महाराजलाई समस्त सिद्धिहरू प्राप्त छन् तथा उहाँको हृदयमा प्रभु विराजमान हुनुहुन्छ, यसैले समस्त शक्तिहरू पनि हजुरका साथ रहने नै छन्। यसमा कुनै आश्चर्यको कुरा छैन।

**दुर्गम काज जगत के जेते। सुगम अनुग्रह तुम्हरे तेते॥ २०॥**

**भावार्थ**—हे महाप्रभु हनुमान्‌जी! संसारमा जति पनि कठिन कार्य छन्, ती सबै हजुरको कृपामात्रले सरल हुन्छन्।

**व्याख्या**—संसारमा रहेर मोक्ष (जन्म-मरणको बन्धनदेखि मुक्ति) प्राप्त गर्नु नै दुर्गम कार्य हो, जो हजुरको कृपाले नै सुलभ छ।

हजुरको अनुग्रह नहुँदाखेरि सुगम कार्य पनि दुर्गम प्रतीत हुन्छन्, परन्तु सरल साधनले जीवप्रति हजुर श्रीहनुमान्‌जीको कृपा शीघ्र नै हुन्छ।

**राम दुआरे तुम रखवारे। होत न आज्ञा बिनु पैसारे॥ २१॥**

**भावार्थ**—भगवान् श्रीरामचन्द्रजीका द्वारपाल (रक्षक) हजुर नै हुनुहुन्छ। हजुरको आज्ञाविना उहाँको दरबारमा कसैको प्रवेश हुन सक्दैन (अर्थात् भगवान् रामको कृपा र भक्ति प्राप्त गर्नको लागि हजुरको कृपा अत्यन्त आवश्यक छ)।

**व्याख्या**—संसारका पुरुषहरूका लागि चारवटा पुरुषार्थ छन्, धर्म, अर्थ, काम र मोक्ष। भगवान्को दरबारमा ठूलो भिड नहोस् भनेर भक्तहरूका तीनवटा पुरुषार्थलाई हनुमान्जीले ढोकामा नै पूरा गरिदिनुहुन्छ। अन्तिम पुरुषार्थ मोक्ष प्राप्तिको अधिकारी श्रीहनुमन्तलालजीको अनुमतिले भगवान्को सान्निध्य (समीप) पाउँदछन्।

मुक्ति चार प्रकारका छन्—सालोक्य, सामीप्य, सारूप्य एवं सायुज्य। यहाँ प्रायः सालोक्यमुक्तिसँग अभिप्राय छ।

**सब सुख लहै तुम्हारी सरना। तुम रच्छक काहू को डर ना॥ २२॥**

**भावार्थ**—हजुरको शरणमा आएका भक्तलाई सबै प्रकारका सुख प्राप्त हुन्छन्। हजुर जसका रक्षक हुनुहुन्छ उसलाई कुनै पनि व्यक्ति या वस्तुको भय रहँदैन।

**व्याख्या**—श्रीहनुमान्जी महाराजको शरण लिएपछि सबै प्रकारका दैहिक, दैविक, भौतिक भय समाप्त हुन्छन् तथा तीनवटै प्रकारका—आधिदैविक, आधिभौतिक एवं आध्यात्मिक सुख सुलभ हुन्छन्।

हजुर सुखनिधान हुनुहुन्छ तथा सबै सुख हजुरको कृपाले सुलभ छन्। यहाँ सबै सुखको तात्पर्य आत्यन्तिक सुख तथा परम सुखसँग (सम्बन्ध) छ। परमात्माप्रभुको शरणमा गएपछि सदैवको लागि दुःखहरूबाट छुटकारा मिल्दछ तथा शाश्वत शान्ति प्राप्त हुन्छ।

**आपन तेज सम्हारो आपै। तीनों लोक हाँक तें काँपै॥ २३॥**

**भावार्थ**—हजुरको तेज [शक्ति, पराक्रम, प्रभाव, पुरुषार्थ र बल] को वेगलाई स्वयं आफैं नै सँभाल्न सक्नुहुन्छ। हजुरको एक हुँकार मात्रले तीनवटै लोक थरथरी (थर्कमान) हुन्छन्।

**व्याख्या**—देवता, दानव र मनुष्य—तीनवटै नै हजुरको तेजलाई सहन गर्नमा असमर्थ छन्। हजुरको भयङ्कर गर्जनाले तीनवटै लोक थर्कमान हुन्छन्।

**भूत पिसाच निकट नहिं आवै। महाबीर जब नाम सुनावै॥ २४॥**

**भावार्थ**—भूत-पिशाच आदि हजुरको 'महावीर' नाम सुन्दा नै (नामोच्चारण गर्नेहरूका) समीप आउँदैनन्।

**व्याख्या**—हनुमान्जीको नाम लिँदाखेरि नै भूत-पिशाच भाग्दछन्

तथा भूत-प्रेत आदिको बाधा मनुष्य नजिक पनि आउँन सक्दैनन्। श्रीहनुमान्जीको नाम लिँदा नै सारा भय टाढा भाग्दछन्।

**नासै रोग हरै सब पीरा। जपत निरंतर हनुमत बीरा॥ २५॥**

**भावार्थ**—वीर हनुमान्जीको निरन्तर जप गर्नाले उहाँले रोगहरूलाई नाश गर्नुहुन्छ तथा सबै पीडाहरूलाई हरण गर्नुहुन्छ।

**व्याख्या**—रोगको नाशको लागि धेरै नै साधन एवं औषधिहरू छन्। यहाँ रोगको मुख्य तात्पर्य भवरोग तथा पीडाका तीनवटै ताप (दैहिक, दैविक, भौतिक) हरू हुन्, जसको शमन (बाधा, विकारहरूलाई शान्त पार्ने काम) श्रीहनुमान्जीको स्मरणमात्रले हुन्छ। श्रीहनुमान्जीको स्मरणले निरोगता तथा निर्द्वन्द्वता प्राप्त हुन्छ।

**संकट तें हनुमान छुड़ावै। मन क्रम बचन ध्यान जो लावै॥ २६॥**

**भावार्थ—**हे हनुमान्‌जी! यदि कसैले मन, कर्म र वाणीद्वारा हजुरको (सच्चा हृदयले) ध्यान गर्छ भने निश्चय नै हजुरले उसलाई सारा सङ्कटबाट छुटकारा दिलाउनुहुन्छ।

**व्याख्या—**जो मनले सोच्दछन् उही वाणीबाट बोल्दछन् तथा त्यही कर्म गर्दछन्–यस्ता महात्मागणलाई हनुमान्‌जीले सङ्कटबाट मुक्त गराउनु हुन्छ। जो मनमा केही सोच्दछन्, वाणीले केही अर्कै कुरा बोल्दछन् तथा कर्म केही अरू नै गर्दछन्, उनीहरू दुरात्मा हुन्। उनीहरू सङ्कटबाट छुट्दैनन्।

**सब पर राम तपस्वी राजा। तिन के काज सकल तुम साजा॥ २७॥**

**भावार्थ—**तपस्वी राम सारा संसारका राजा हुनुहुन्छ। [यस्ता सर्वसमर्थ] प्रभुका समस्त कार्यहरू हजुरले नै पूरा गर्नुभयो।

**व्याख्या—'पिताँ दीन्ह मोहि कानन राजू'** को अनुसार श्रीरामचन्द्रजी वनका राजा हुनुहुन्छ र मुनिभेषमा हुनुहुन्छ। वनमा श्रीहनुमान्‌जी नै रामका निकटतम अनुचर हुनुहुन्छ। यस कारणले समस्त कार्यहरूको सुन्दर ढङ्गले सम्पादन गर्ने श्रेय उहाँलाई नै जान्छ।

**और मनोरथ जो कोइ लावै। सोइ अमित जीवन फल पावै॥ २८॥**

**भावार्थ**—हे हनुमान्‌जी! हजुरसँग कोही कुनै प्रकारको पनि मनोरथ [धन, पुत्र, यश आदिको कामना] लिएर आउँदछ, (उसको) त्यो कामना पूरा हुन्छ। यसको साथै **'अमित जीवन फल'** अर्थात् भक्ति पनि उसलाई प्राप्त हुन्छ।

**व्याख्या**—गोस्वामी श्रीतुलसीदासजीको 'कवितावली' मा **'अमित जीवन फल'** को वर्णन यस प्रकार छ—

**सियराम-सरूपु अगाध अनूप बिलोचन-मीननको जलु है।**
**श्रुति रामकथा, मुख रामको नामु, हिएँ पुनि रामहिको थलु है॥**
**मति रामहि सों, गति रामहि सों, रति रामसों, रामहि को बलु है।**
**सबकी न कहै, तुलसीके मतें इतनो जग जीवनको फलु है॥**

श्रीसीतारामजीका चरणमा प्रीति र भक्ति प्राप्त होस् यही जीवनफल हो। यो प्रदान गर्ने क्षमता श्रीहनुमान्जीमा नै छ।

**चारों जुग परताप तुम्हारा। है परसिद्ध जगत उजियारा॥ २९॥**

**भावार्थ**—हे हनुमान्जी! चारवटै युग (सत्य, त्रेता, द्वापर, कलियुग) मा हजुरको प्रतापले जगत्लाई सदैव प्रकाशित गर्दै आएको छ—यस्तो लोकमा प्रसिद्ध छ।

**व्याख्या**—मनुष्यको जीवनमा प्रतिदिन—रात्रिमा चार युग आउँदै-

जाँदै गरिरहन्छन्। यसको अनुभूति श्रीहनुमान्जीद्वारा नै हुन्छ अथवा जाग्रत्, स्वप्न, सुषुप्ति एवं तुरीय—चारै अवस्थाहरूमा पनि हजुर नै द्रष्टारूपले सदैव उपस्थित रहनुहुन्छ।

**साधु संत के तुम रखवारे। असुर निकंदन राम दुलारे॥ ३०॥**

**भावार्थ—**हजुर साधु-सन्तलाई रक्षा गर्नेवाला हुनुहुन्छ। राक्षसहरूको संहार (नाश) गर्नेवाला हुनुहुन्छ र श्रीरामजीका अति प्रिय हुनुहुन्छ।

**व्याख्या—**श्रीहनुमान्जी महाराज रामका दुलारे (प्यारा) हुनुहुन्छ। तात्पर्य यो हो कि कुनै कुरा प्रभुसँग मनाउनु (फकाउनु) छ भने श्रीहनुमान्जीको आराधना गर्नुपर्छ।

**अष्ट सिद्धि नौ निधि के दाता। अस बर दीन जानकी माता॥ ३१॥**

**भावार्थ—**माता जानकीजीले हजुरलाई वरदान दिनुभयो कि

हजुर आठवटै प्रकारका सिद्धिहरू (अणिमा, महिमा, गरिमा, लघिमा, प्राप्ति, प्राकाम्य, ईशत्व, वशित्व) र नौ प्रकारका निधिहरू (पद्म, महापद्म, शङ्ख, मकर, कच्छप, मुकुन्द, कुन्द, नील, खर्व) प्रदान गर्नलाई समर्थ हुनुहुन्छ।

**व्याख्या**—रुद्रावतार हुनाको कारण समस्त प्रकारका सिद्धिहरू एवं निधिहरू श्रीहनुमान्‌जीलाई जन्मदाखेरि नै प्राप्त थिए। तिनै सिद्धिहरू एवं निधिहरूलाई अरूलाई प्रदान गर्ने शक्ति माता जानकीजीको आशीर्वादले प्राप्त भयो।

**राम रसायन तुम्हरे पासा। सदा रहो रघुपति के दासा॥ ३२॥**

**भावार्थ**—अनन्त कालदेखि हजुर भगवान् श्रीरामका दास हुनुहुन्छ। अतः रामनामरूपी रसायन। (भवरोगको अमोघ औषधि) सदा हजुरसँग रहन्छ।

**व्याख्या**—कुनै औषधि सिद्ध गरेपछि मात्रै रसायन बन्न सक्छ। उसको सिद्धिको पुनः आवश्यकता पर्दैन, तत्काल उपयोगमा ल्याउन सकिन्छ र फलदायक सिद्ध हुन सक्छ। अतः रामनाम रसायन भइसकेको छ, यसको सिद्धिको कुनै आवश्यकता छैन। सेवन गर्नाले सद्यःफल प्राप्त हुनेछ।

**तुम्हरे भजन राम को पावै। जनम जनम के दुख बिसरावै॥ ३३॥**

**भावार्थ**—हजुरको भजनले मानिस श्रीरामलाई प्राप्त गर्दछन् र आफ्ना जन्म-जन्मान्तरका दुःखहरूलाई भुल्दछन् अर्थात् उनै दुःखहरूबाट उनीहरूलाई मुक्ति मिल्दछ।

**व्याख्या**—भजनको मुख्य तात्पर्य यहाँ सेवा हो। सेवा दुई प्रकारका हुन्छन्—पहिलो सकाम, दोस्रो निष्काम। प्रभुलाई प्राप्त गर्नको लागि निष्काम र निःस्वार्थ सेवाको आवश्यकता हुन्छ, जस्तो कि श्रीहनुमान्जीले

गर्दै आउनुभएको छ। अतः श्रीरामसँग हनुमान्‌जीको जस्तो सेवासँग यहाँ सङ्केत गरिएको छ।

**अंत काल रघुबर पुर जाई। जहाँ जन्म हरि-भक्त कहाई॥ ३४॥**

**भावार्थ**—अन्त समयमा मृत्यु भएपछि त्यो भक्त प्रभुको परमधाममा जानेछ र यदि उसलाई जन्म लिन परेमा उसको प्रसिद्धि हरिभक्तको रूपमा हुनेछ।

**व्याख्या**—भजन अथवा सेवाको परम फल हो हरिभक्तिको प्राप्ति। यदि भक्तलाई पुनः जन्म लिन पर्‍यो भने अवध आदि तीर्थहरूमा जन्म लिएर प्रभुको परम भक्त बन्दछ।

**और देवता चित्त न धरई। हनुमत सेइ सर्ब सुख करई॥ ३५॥**

**भावार्थ**—हजुरको यस महिमालाई जानेपछि कुनै पनि प्राणीले कुनै

अरू देवतालाई हृदयमा धारण नगर्दा पनि हजुरको सेवाबाट नै जीवनका सबै सुख प्राप्त गर्दछ।

**व्याख्या**—श्रीहनुमान्जीसँग अष्टसिद्धि र नवनिधिका अतिरिक्त मोक्ष या भक्ति पनि प्राप्त गर्न सकिन्छ। यसकारण यस मानव-जीवनको अल्पायुमा धेरै ठाउँमा चक्कर नलगाउने कुरा भनियो। यस्तो दिशा-निर्देश गरिएको छ, जहाँबाट चारवटै पुरुषार्थ (धर्म, अर्थ, काम र मोक्ष) प्राप्त गर्न सकिन्छ।

यहाँ सर्वसुखको तात्पर्य आत्यन्तिक सुख हो, जो श्रीमारुतनन्दनद्वारा नै प्राप्त हुन सक्तछ।

**संकट कटै मिटै सब पीरा। जो सुमिरै हनुमत बलबीरा॥ ३६॥**

**भावार्थ**—जुन प्राणीले वीरश्रेष्ठ श्रीहनुमान्जीलाई हृदयमा स्मरण गर्दछ, उसका सबै सङ्कट नष्ट हुन्छन् र सबै प्रकारका

पीडाहरू समाप्त हुन्छन्।

**व्याख्या**—जन्म-मरण-यातनाको अन्त अर्थात् भवबन्धनबाट छुट्कारा परमात्मा प्रभुले नै गराउन सक्नुहुन्छ। भगवान् श्रीहनुमान्जीको वशमा हुनुहुन्छ। अतः श्रीहनुमान्जी सम्पूर्ण सङ्कट र पीडाहरूलाई भगाउँदै जन्म-मरणको बन्धनदेखि मुक्त गराउनमा पूर्ण समर्थ हुनुहुन्छ।

**जै जै जै हनुमान गोसाईं। कृपा करहु गुरु देव की नाईं॥ ३७॥**

**भावार्थ**—हे हनुमान् स्वामी! हजुरको जय होस्! जय होस्!! जय होस्!!! हजुरले श्रीगुरुदेवले झैं मेरो लागि कृपा गर्नुहोस्।

**व्याख्या**—गुरुदेवले जसरी शिष्यको धृष्टता आदिको ध्यान राख्दैनन् र उसको कल्याणमा नै लागिरहन्छन् [जस्तै काकभुशुण्डिजीका गुरु], उस्तै प्रकार हजुरले पनि मप्रति गुरुदेवका झैं नै कृपा गर्नुहोस्—

**'प्रभु मेरे अवगुन चित न धरो।'**

**जो सत बार पाठ कर कोई। छूटहि बंदि महा सुख होई॥ ३८॥**

**भावार्थ**—जसले यस (हनुमानचालीसा) लाई सय पटक पाठ गर्दछ, उसले सारा बन्धनहरू र कष्टहरूबाट छुट्कारा पाउँदछ र उसलाई महान् सुख (परमपद) को प्राप्ति हुन्छ।

**व्याख्या**—श्रीहनुमानचालीसा पाठको फलश्रुति यो तथा अघिल्लो (पैलो) चौपाईमा बताइएको छ। संसारमा कुनै पनि प्रकारको बन्धनबाट मुक्त हुनको लागि प्रतिदिन सय पाठ तथा दशांशरूपमा एघार पाठ, यस प्रकार एक सय एघार पाठ गर्नुपर्छ। यसैबाट व्यक्तिले राघवेन्द्र प्रभुको सामीप्यको लाभ उठाएर अनन्त सुख प्राप्त गर्दछ।

**जो यह पढ़ै हनुमान चलीसा। होय सिद्धि साखी गौरीसा॥ ३९॥**

**भावार्थ**—जुन व्यक्तिले यो श्रीहनुमानचालीसाको पाठ गर्नेछ उसले निश्चित रूपले सिद्धिहरू (लौकिक एवं पारलौकिक) लाई प्राप्त गर्नेछ; भगवान् शङ्कर यसका स्वयं साक्षी हुनुहुन्छ।

**व्याख्या**—श्रीशङ्करजी साक्षी हुनाको तात्पर्य यो हो कि भगवान् श्रीसदाशिवको प्रेरणाले नै श्रीतुलसीदासजीले श्रीहनुमानचालीसाको रचना गर्नुभयो। अतः यसलाई भगवान् शङ्करको पूर्ण आशीर्वाद छ। यसैले यो हनुमान्जीको सिद्ध स्तुति हो।

**तुलसीदास सदा हरि चेरा। कीजै नाथ हृदय महँ डेरा॥ ४०॥**

**भावार्थ**—हे नाथ श्रीहनुमान्जी! तुलसीदास सदा-सर्वदाको लागि श्रीहरि (भगवान् श्रीराम) का सेवक हुनुहुन्छ। यस्तो सम्झेर हजुर वहाँको हृदयभवनमा निवास गर्नुहोस्।

**व्याख्या—**श्रीहनुमानचालीसामा श्रीहनुमान्जीको स्तुति गरेपछि यस चौपाईमा श्रीतुलसीदासजीले उहाँसँग अन्तिम वरदान माग्नुभयो कि हे हनुमान्जी! हजुर मेरो हृदयमा सदैव निवास गर्नुहोस्।

**दोहा**

**पवनतनय संकट हरन, मंगल मूरति रूप।**
**राम लखन सीता सहित, हृदय बसहु सुर भूप॥ २॥**

**भावार्थ—**हे पवनसुत श्रीहनुमान्जी! हजुरले सारा सङ्कटहरू नष्ट गर्नुहुन्छ तथा साक्षात् कल्याणका मूर्ति हुनुहुन्छ। हजुर भगवान् श्रीरामचन्द्रजी, लक्ष्मणजी र माता सीताजीका साथ मेरो हृदयमा निवास गर्नुहोस्।

**व्याख्या—**भक्तको हृदयमा भगवान् रहनु नै हुन्छ। यसैले भक्तको हृदयमा विराजमान गर्दाखेरि प्रभु स्वतः विराजमान हुनुहुन्छ। श्रीहनुमान्जी

भगवान् रामका परम भक्त हुनुहुन्छ। उहाँसँग अन्तमा यो प्रार्थना गरियो कि प्रभुका साथ मेरो हृदयमा हजुर विराजमान होइबक्सियोस्।

विनाश्रीराम, लक्ष्मण एवं सीताजीको श्रीहनुमान्जीलाई स्थायी निवास सम्भव पनि छैन। यी चार जनालाई हृदयमा बसाल्नुको तात्पर्य चारवटै पदार्थलाई एकै पटक प्राप्त गर्नु हो। चारै पदार्थको तात्पर्य ज्ञान (राम), विवेक (लक्ष्मण), शान्ति (सीताजी) एवं सत्सङ्ग (हनुमान्जी) बाट हुन्छ।

सत्सङ्गद्वारा नै ज्ञान, विवेक एवं शान्तिको प्राप्ति हुन्छ। यहाँ श्रीहनुमान्जी सत्सङ्गको प्रतीक हुनुहुन्छ। अतः श्रीहनुमान्जीको आराधनाले सबै थोक प्राप्त हुन सक्तछ।



# सङ्कटमोचन हनुमानाष्टक

## मत्तगयन्द छन्द

बाल समय रबि भक्षि लियो तब
तीनहुँ लोक भयो अँधियारो।
ताहि सों त्रास भयो जग को
यह संकट काहु सों जात न टारो॥
देवन आनि करी बिनती तब
छाँड़ि दियो रबि कष्ट निवारो।
को नहिं जानत है जगमें कपि
संकटमोचन नाम तिहारो॥ १ ॥

**भावार्थ—**हे महावीर स्वामी हनुमान्‌जी ! जब हजुर बालक हुनुहुन्थ्यो, तब हजुरले सूर्यलाई फल सम्झेर निल्नुभएको थियो। यसबाट तीनै लोकमा अन्धकार छाइएको थियो र सारा संसार भयभीत भएको थियो। यस सङ्कटलाई नष्ट गर्नको लागि कुनै पनि समर्थ हुन सकेका थिएनन्। चारैतर्फबाट निराश भएर देवताहरूले जब हजुरसँग प्रार्थना गरे, तब हजुरले सूर्यलाई छोडिदिनुभयो। यस प्रकार उनीहरूको र सारा संसारको कष्ट दूर (नष्ट) गर्नुभयो। संसारमा यस्तो को छ, जो हजुरको 'सङ्कटमोचन' नामसँग परिचित छैन ?॥ १ ॥

**बालि की त्रास कपीस बसै गिरि**
**जात महाप्रभु पंथ निहारो।**
**चौंकि महा मुनि साप दियो तब**
**चाहिय कौन बिचार बिचारो॥**

**कै द्विज रूप लिवाय महाप्रभु**
**सो तुम दास के सोक निवारो।को०–२॥**

**भावार्थ—**बालिको भयको कारण कहीं शरण नपाएर बाँदरराज सुग्रीव लुकेर (ऋष्यमूक) पर्वतमा रहन्थे, जहाँ मतङ्ग मुनिको शापको कारण बालि प्रवेश गर्दैनथ्यो। महाप्रभु श्रीरामचन्द्रजी लक्ष्मणजीका साथ जब सीताजीलाई खोज्दै त्यताबाटै गइरहनुभएको थियो, तब सुग्रीवले उहाँलाई बालिले पठाएको योद्धा सम्झेर चकित भएर यस्तो विचार गर्न लागे कि अब के गर्नुपर्छ? हे हनुमान्जी! तब हजुरले ब्राह्मणको रूप धारण गरेर भगवान् श्रीरामचन्द्रजीलाई त्यहाँ ल्याउनुभयो। यस प्रकार हजुरले दास सुग्रीवको महान् भय र शोकलाई दूर गर्नुभयो। संसारमा यस्तो को छ, जो हजुरको 'सङ्कटमोचन' नामसँग परिचित छैन?॥ २॥

**अंगद के सँग लेन गये सिय**
**खोज कपीस यह बैन उचारो।**
**जीवत ना बचिहौ हम सो जु**
**बिना सुधि लाए इहाँ पगु धारो॥**
**हेरि थके तट सिंधु सबै तब लाय**
**सिया-सुधि प्रान उबारो। को०-३॥**

**भावार्थ—**सीताजीको खोजीको लागि जब बाँदर अङ्गदका साथ प्रस्थान गरिरहेका थिए, तब बाँदरराज सुग्रीवले उनीहरूलाई यो आदेश दिए कि सीताजीको पत्ता लगाएविना जो यहाँ फर्केर आउनेछ, त्यो मेरो हातबाट जीवित रहनेछैन। किन्तु धेरै नै खोजेपछि पनि जब सीताजीको कतै थाहा पाउन सकिएन, त्यसपछि सबै बाँदर जीवनबाट निराश भएर

समुद्र–तटमा थाकेर बसेका थिए। त्यतिखेर सीताजीलाई पत्ता लगाएर हजुरले ती बाँदरहरूको प्राणको रक्षा गर्नुभयो। संसारमा यस्तो को छ, जो हजुरको 'सङ्कटमोचन' नामसँग परिचित छैन?॥ ३ ॥

**रावन त्रास दई सिय को सब**
**राक्षसि सों कहि सोक निवारो।**
**ताहि समय हनुमान महाप्रभु**
**जाय महा रजनीचर मारो॥**
**चाहत सीय असोक सों आगि सु**
**दै प्रभु मुद्रिका सोक निवारो।को०–४॥**

**भावार्थ—**रावणले सीताजीलाई कष्ट पुर्‍याउनको लागि सबै राक्षसीहरूलाई निर्देश दिएको थियो। हे महाप्रभु हनुमान्‌जी! त्यही समयमा त्यहाँ पुगेर

हजुरले ठूलाठूला राक्षस योद्धाहरूको संहार गर्नुभयो। शोकदेखि अत्यन्त संतप्त भएर सीताजी स्वयंलाई भस्म गर्नको लागि अशोक–वृक्षसँग अग्निको याचना गरिरहनुभएको थियो, त्यही समय हजुरले उहाँलाई भगवान् श्रीरामको औंठी दिएर उहाँको महान् शोकलाई निवारण गर्नुभयो। संसारमा यस्तो को छ, जो हजुरको 'सङ्कटमोचन' नामसँग परिचित छैन?॥ ४॥

**बान लग्यो उर लछिमन के तब**
**प्रान तजे सुत रावन मारो।**
**लै गृह बैद्य सुषेन समेत**
**तबै गिरि द्रोन सु बीर उपारो॥**
**आनि सजीवन हाथ दई तब**
**लछिमन के तुम प्रान उबारो। को०–५॥**

**भावार्थ**—जब रावण-सुत मेघनादको बाण (वीरघातिनी शक्ति) को चोटले लक्ष्मणजीको प्राण निस्कन नै लागेको थियो, तब हजुरले लङ्काबाट सुषेण वैद्यलाई उसको घरसहित उठाएर ल्याउनुभयो तथा (सुषेण वैद्यको परामर्शले) द्रोण पर्वतलाई उखेलेर सञ्जीवनी बुटी पनि ल्याउनुभयो। यस प्रकार हजुरले लक्ष्मणजीको प्राणको रक्षा गर्नुभयो। संसारमा यस्तो को छ, जो हजुरको 'सङ्कटमोचन' नामसँग परिचित छैन?॥ ५ ॥

**रावन जुद्ध अजान कियो तब**
**नाग कि फाँस सबै सिर डारो।**
**श्रीरघुनाथ समेत सबै दल**
**मोह भयो यह संकट भारो॥**

**आनि खगेस तबै हनुमान जु**
**बंधन काटि सुत्रास निवारो। को०-६ ॥**

**भावार्थ—**रावणले घोर युद्ध गर्दाखेरि सबै सेनालाई नागपाशमा बाँधेको थियो। यस्तो महान् सङ्कटको प्रभावले प्रभु श्रीरामचन्द्रजी समेत सारा सेना मोहित भएका थिए। कसैले यसको मुक्तिको कुनै उपाय सोच्न सकेका थिएनन्। हे हनुमान्जी! तब हजुरले नै गरुडलाई बोलाएर यस्तो बन्धन कटाउनुभयो र सबैलाई घोर त्रासबाट मुक्त गर्नुभयो। संसारमा यस्तो को छ, जो हजुरको 'सङ्कटमोचन' नामसँग परिचित छैन?॥ ६ ॥

**बंधु समेत जबै अहिरावन**
**लै रघुनाथ पताल सिधारो।**

**देबिहिं पूजि भली बिधि सों बलि**
**देउ सबै मिलि मंत्र बिचारो॥**
**जाय सहाय भयो तब ही**
**अहिरावन सैन्य समेत सँहारो। को०-७॥**

**भावार्थ**—अहिरावणले जब लक्ष्मणजीका साथै भगवान् श्रीरामचन्द्रजीलाई पातालपुरीमा उठाएर लिएर गयो र त्यहाँ राक्षसहरूसँग बसेर यो विचार गरिरहेको थियो कि भलीभाँति देवीको पूजा गरेर यिनीहरूलाई नै बलि चढाउनुपर्‍यो, त्यतिखेर हजुर नै त्यहाँ पुगेर सेनासहित अहिरावणको संहार गरेर भगवान् श्रीराम र लक्ष्मणजीको सहायक बन्नुभयो। संसारमा यस्तो को छ, जो हजुरको 'सङ्कटमोचन' नामसँग परिचित छैन?॥७॥

**काज किये बड़ देवन के तुम**
**बीर महाप्रभु देखि बिचारो।**
**कौन सो संकट मोर गरीब को**
**जो तुमसों नहिं जात है टारो॥**
**बेगि हरो हनुमान महाप्रभु**
**जो कछु संकट होय हमारो।को०-८॥**

**भावार्थ**—हे परमवीर महाप्रभु हनुमान्‌जी! हजुरले आफ्ना कार्यहरूलाई हेरेर विचार गर्नुहोस् कि हजुरले देवताहरूका ठूलाठूला कठिन कार्यहरूलाई पूरा गर्नुभयो। तब फेरि म दीन-हीनको यस्तो के सङ्कट हुन सक्तछ, जसलाई हजुरले पूरा गर्न सक्नुहुन्न? हे महाप्रभु हनुमान्‌जी! मेरा जे-जति पनि सङ्कट छन्, हजुरले उसलाई शीघ्र नै नाश गर्ने कृपा गर्नुहोस्।

संसारमा यस्तो को छ, जो हजुरको 'सङ्कटमोचन' नामसँग परिचित छैन? ॥ ८ ॥

**दोहा— लाल देह लाली लसे, अरु धरि लाल लँगूर।**
**बज्र देह दानव दलन, जय जय जय कपि सूर॥**

**भावार्थ**—हजुरको रातो देहको रातोपना अत्यन्त शोभायमान भइरहेको छ र हजुरले रातो पुच्छर धारण गर्नुभएको छ। वज्रको समान हजुरको सुदृढ देह दानवहरूलाई नाश गर्नेवाला छ। हे महाशूर हनुमान्‌जी! हजुरको जय होस्! जय होस्!! जय होस्!!!

*॥ इति सङ्कटमोचन हनुमानाष्टक सम्पूर्ण॥*

## श्रीरामावतार

**भए प्रगट कृपाला दीनदयाला कौसल्या हितकारी।**
**हरषित महतारी मुनि मन हारी अद्भुत रूप बिचारी॥**
**लोचन अभिरामा तनु घनस्यामा निज आयुध भुज चारी।**
**भूषन बनमाला नयन बिसाला सोभासिंधु खरारी॥**

दीनहरूप्रति दया गर्नुहुने कौसल्याजीका हितकारी कृपालु प्रभु प्रकट हुनुभयो। मुनिहरूका मनलाई हरण गर्ने उहाँको अद्‌भुत रूपलाई विचार गरेर आमा हर्षले भरिनुभयो। नेत्रलाई आनन्द दिनुहुने मेघसमान श्याम शरीर थियो; चारै भुजाहरूमा आफ्ना (खास) आयुध [धारण गर्नुभएको] थियो; [दिव्य] आभूषण र वनमाला पहिरनुभएको थियो; ठूला–ठूला नेत्र

थिए। यस प्रकार शोभाका समुद्र तथा खर (नाम भएको) राक्षसलाई मार्ने भगवान् प्रकट हुनुभयो॥ १॥

**कह दुइ कर जोरी अस्तुति तोरी केहि बिधि करौं अनंता।**
**माया गुन ग्यानातीत अमाना बेद पुरान भनंता॥**
**करुना सुखसागर सब गुन आगर जेहि गावहिं श्रुति संता।**
**सो मम हित लागी जन अनुरागी भयउ प्रगट श्रीकंता॥**

दुवै हात जोडेर आमाले भन्न लाग्नुभयो—हे अनन्त! मैले कुन प्रकारले तिम्रो स्तुति गरूँ। वेद र पुराणले तिमीलाई माया, गुण र ज्ञानबाट टाढै र परिमाणरहित बताउँदछन्। श्रुतिहरू र सन्तजनले दया र सुखका समुद्र, सबै गुणहरूका धाम भनेर जसलाई गाउने गर्दछन्, उनै भक्तहरूसँग प्रेम गर्ने लक्ष्मीपति भगवान् मेरो कल्याणका

लागि प्रकट हुनुभएको छ॥ २॥

**ब्रह्मांड निकाया निर्मित माया रोम रोम प्रति बेद कहै।**
**मम उर सो बासी यह उपहासी सुनत धीर मति थिर न रहै॥**
**उपजा जब ग्याना प्रभु मुसुकाना चरित बहुत बिधि कीन्ह चहै।**
**कहि कथा सुहाई मातु बुझाई जेहि प्रकार सुत प्रेम लहै॥**

वेदले भन्दछन् कि तिम्रो प्रत्येक रौंमा मायाबाट रचिएका अनेकौं ब्रह्माण्डका समूहहरू [भरिएका] छन्। उनै तिमी मेरो गर्भमा रह्यौ—यस्तो हाँसो लाग्दो कुरालाई सुन्दाखेरि धीर (विवेकी) पुरुषहरूको बुद्धि पनि स्थिर रहन सक्दैन (विचलित भइहाल्दछ)। जब आमालाई ज्ञान उत्पन्न भयो, त्यसपछि प्रभु मुस्कुराउनुभयो। उहाँले धेरै प्रकारका चरित्र गर्न चाहनुहुन्थ्यो। अतः उहाँले [पूर्वजन्मको] सुन्दर कथा भनेर आमालाई

सम्झाउनुभयो, जसबाट उहाँलाई पुत्रको (वात्सल्य) प्रेम प्राप्त होस् (भगवान्प्रति पुत्रभाव होस्) ॥ ३ ॥

**माता पुनि बोली सो मति डोली तजहु तात यह रूपा।**
**कीजै सिसुलीला अति प्रियसीला यह सुख परम अनूपा॥**
**सुनि बचन सुजाना रोदन ठाना होइ बालक सुरभूपा।**
**यह चरित जे गावहिं हरिपद पावहिं ते न परहिं भवकूपा॥**

आमाको त्यो बुद्धि बदलियो, त्यसपछि उहाँ फेरि बोल्नुभयो—हे पुत्र! यो रूपलाई छोडेर अत्यन्त प्रिय बाललीला गर, [मेरो लागि] यो सुख परम अनुपम हुनेछ। [आमाका] यी वचन सुनेर देवताहरूका स्वामी सुजान भगवान्ले बालक [रूप] भएर रुन सुरु गर्नुभयो। [तुलसीदासजी भन्नुहुन्छ—] जसले यस चरित्रलाई गाउने गर्दछन्, उनले श्रीहरिको पद

पाउँदछन् र [फेरि] संसाररूपी कुवामा खस्ने छैनन्॥ ४॥

**बिप्र धेनु सुर संत हित लीन्ह मनुज अवतार।**
**निज इच्छा निर्मित तनु माया गुन गो पार॥**

ब्राह्मण, गाई, देवता र सन्तहरूको हितका लागि भगवान्‌ले मनुष्यको अवतार लिनुभयो। उहाँ [अज्ञानमयी, मलिन] माया र त्यसको गुण (सत्व, रज, तम) र [बाहिरी तथा भित्री] इन्द्रियहरूबाट पर (टाढा) हुनुहुन्छ। उहाँको [दिव्य] शरीर आफ्नो इच्छाबाट नै बनेको हो [कुनै कर्मबन्धनबाट परवश भएर त्रिगुणात्मक भौतिक पदार्थहरूद्वारा होइन]।



# रुद्राष्टक

**नमामीशमीशान निर्वाणरूपं। विभुं व्यापकं ब्रह्म वेदस्वरूपं॥**
**निजं निर्गुणं निर्विकल्पं निरीहं। चिदाकाशमाकाशवासं भजेऽहं॥**

हे मोक्षस्वरूप, विभु, व्यापक, ब्रह्म र वेदस्वरूप, ईशान दिशाका ईश्वर र सबैका स्वामी शिवजी हजुरलाई नमस्कार गर्दछु। निजस्वरूपमा स्थित (अर्थात् मायादिरहित), [मायिक] गुणले रहित, भेदरहित, इच्छारहित, चेतन आकाशरूप एवं आकाशलाई नै वस्त्ररूपमा धारण गर्ने दिगम्बर [अथवा आकाशलाई पनि आच्छादित गर्ने] हजुरको म भजन गर्दछु।

**निराकारमोंकारमूलं तुरीयं। गिरा ग्यान गोतीतमीशं गिरीशं॥**
**करालं महाकाल कालं कृपालं। गुणागार संसारपारं नतोऽहं॥**

निराकार, ओङ्कारका मूल, तुरीय (तीनै गुणले अतीत), वाणी, ज्ञान र इन्द्रियदेखि टाढै (पर) रहने, कैलाशपति, विकराल, महाकालका पनि काल,

कृपालु, गुणहरूका धाम, संसारदेखि पर हजुर परमेश्वरलाई म नमस्कार गर्दछु ॥ २ ॥

**तुषाराद्रि संकाश गौरं गभीरं । मनोभूत कोटि प्रभा श्री शरीरं ॥**
**स्फुरन्मौलि कल्लोलिनी चारु गंगा। लसद्भालबालेन्दु कंठे भुजंगा ॥**

जुन हिमाचलका समान गौरवर्ण र गम्भीर हुनुहुन्छ, जसको शरीरमा करोडौं कामदेवको ज्योति एवं शोभा छ, जसको शिरमा सुन्दर नदी गङ्गाजी विराजमान छिन्, जसको ललाटमा द्वितीयाका चन्द्रमा र गलामा सर्प सुशोभित छन् ॥ ३ ॥

**चलत्कुंडलं भ्रू सुनेत्रं विशालं । प्रसन्नाननं नीलकंठं दयालं ॥**
**मृगाधीशचर्माम्बरं मुण्डमालं । प्रियं शंकरं सर्वनाथं भजामि ॥**

जसको कानमा कुण्डल हल्लिरहेका छन्, सुन्दर भ्रुकुटी (आँखीभौं) र विशाल नेत्र छन्; जुन प्रसन्नमुख, नीलकण्ठ र दयालु होइबक्सिन्छ;

सिंहचर्मको वस्त्र धारण गरिबक्सिएको छ र मुण्डमाला लगाइबक्सिएको छ; उनै सबैका प्यारा र सबैका नाथ [कल्याण गर्ने] श्रीशङ्करलाई भज्दछु (अर्थात् प्रेम गर्दछु, भजन गर्दछु) ॥ ४ ॥

**प्रचंडं प्रकृष्टं प्रगल्भं परेशं। अखंडं अजं भानुकोटिप्रकाशं॥**
**त्रयः शूल निर्मूलनं शूलपाणिं। भजेऽहं भवानीपतिं भावगम्यं॥**

प्रचण्ड (रुद्ररूप), श्रेष्ठ, तेजस्वी, परमेश्वर, अखण्ड, अजन्मा, करोडौं सूर्यहरूका समान प्रकाशमान, तीनै प्रकारका शूल (दुःखहरू) लाई निर्मूल गर्नेवाला, हातमा त्रिशूल धारण गरिबक्सिएका, भाव (प्रेम) द्वारा प्राप्त हुनेवाला भवानीका पति श्रीशङ्करलाई म भज्दछु॥ ५॥

**कलातीत कल्याण कल्पान्तकारी। सदा सज्जनानन्ददाता पुरारी॥**
**चिदानंद संदोह मोहापहारी। प्रसीद प्रसीद प्रभो मन्मथारी॥**

कलाहरूदेखि पर, कल्याणस्वरूप, कल्पलाई अन्त्य (प्रलय) गर्नेवाला, सज्जनहरूलाई सधैं आनन्द दिने, त्रिपुरका शत्रु, सच्चिदानन्दघन, मोहलाई हरण गर्ने, मनलाई मन्थन गर्ने कामदेवका शत्रु, हे प्रभु! प्रसन्न होइबक्सियोस्, प्रसन्न होइबक्सियोस्॥ ६ ॥

**न यावद् उमानाथ पादारविन्दं । भजंतीह लोके परे वा नराणां॥**
**न तावत्सुखं शान्ति सन्तापनाशं । प्रसीद प्रभो सर्वभूताधिवासं॥**

जबसम्म पार्वतीका पति हजुरका चरणकमललाई मनुष्यले भज्दैनन्, तबसम्म उनीहरूलाई न त इहलोक र परलोकमा सुख–शान्ति मिल्दछ र न उनका तापहरू नै नष्ट हुन्छन्। अतः हे समस्त जीवहरूको हृदयमा निवास गर्ने प्रभु! प्रसन्न होइबक्सियोस्॥ ७ ॥

**न जानामि योगं जपं नैव पूजां । नतोऽहं सदा सर्वदा शंभु तुभ्यं॥**

**जरा जन्म दुःखौघ तातप्यमानं । प्रभो पाहि आपन्नमामीश शंभो ॥**

मैले न त योग जानेको छु, न जप र न पूजा नै। हे शम्भु! मैले सदा–सर्वदा हजुरलाई नै नमस्कार गर्दछु। हे प्रभु! वृद्धावस्था तथा जन्म [मृत्यु] को दुःख समूहले जल्दै गरेको म दुःखीलाई दुःखबाट रक्षा गरिबक्सियोस्। हे ईश्वर! हे शम्भु! मैले हजुरलाई नमस्कार गर्दछु॥ ८॥

**रुद्राष्टकमिदं प्रोक्तं विप्रेण हरतोषये।**
**ये पठन्ति नरा भक्त्या तेषां शम्भुः प्रसीदति॥**

भगवान् रुद्रको स्तुतिको यो अष्टक उनै शङ्करजीलाई तुष्टि (प्रसन्नता) को लागि ब्राह्मणद्वारा भनिएको हो। जुन मनुष्यले यसलाई भक्तिपूर्वक पाठ गर्दछन्, उनीप्रति भगवान् शम्भु सदैव प्रसन्न हुनुहुन्छ॥ ९॥



# श्रीहनुमान्जीको आरती

**आरती कीजै हनुमान लला की। दुष्टदलन रघुनाथ कला की।।टेक।।**
**जाके बल से गिरिवर काँपै। रोग–दोष जाके निकट न झाँपै।। १ ।।**

दुष्टहरूलाई नाश गर्नेवाला भगवान् श्रीरामचन्द्रका कलास्वरूप हनुमान्ललाको आरती गर्नुहोस्। उहाँको बलको सम्मुख श्रेष्ठ पर्वत पनि थरथरी (थरथरती) हुन्छन्। रोग–दोष आदि उहाँको निकट आउने साहस गर्दैनन्।

**अंजनि पुत्र महा बलदाई। संतन के प्रभु सदा सहाई।। २ ।।**
**दे बीरा रघुनाथ पठाये। लंका जारि सीय सुधि लाये।। ३ ।।**

अञ्जनी–पुत्र श्रीहनुमान्जी महान् बल प्रदान गर्नेवाला हुनुहुन्छ। उहाँले सधैं सन्तहरूको सहायता गर्नुहुन्छ। भगवान् श्रीरामचन्द्रजीले

उहाँलाई केवल सीताजीलाई पत्ता लगाउनुलाई अभिभारा सुम्पेर पठाउनुभएको थियो, उहाँले लङ्का नगरीलाई जलाएर सीताजीको समाचार भगवान्सँग लिएर आउनुभयो।

**लंका सो कोट समुद्र सी खाई। जात पवनसुत बार न लाई॥ ४ ॥**
**लंका जारि असुर संहारे। सियारामजीके काज सँवारे॥ ५ ॥**

लङ्काको गढ (किल्ला) र समुद्र दुवै अत्यन्त दुर्गम थिए, किन्तु पवनपुत्र हनुमान्जीलाई यी दुवैलाई पार गर्नलाई कत्ति पनि विलम्ब भएन। उहाँले लङ्कालाई जलाएर असुरहरूलाई संहार गर्नुभयो र भगवान् श्रीरामचन्द्रजीका सम्पूर्ण कार्यहरूलाई पूर्ण गर्नुभयो।

**लक्ष्मण मूर्छित पड़े सकारे। आनि सजीवन प्रान उबारे॥ ६ ॥**

**पैठि पताल तोरि जम-कारे। अहिरावन की भुजा उखारे॥ ७ ॥**

श्रीलक्ष्मणजी युद्धमा मूर्च्छित हुनुभएको थियो (चारैतर्फ शोकको कोलाहल व्याप्त थियो), त्यसपछि हनुमान्‌जीले शीघ्र नै सञ्जीवनी बुटी ल्याएर उहाँको प्राणको रक्षा गर्नुभयो। उहाँले पातालमा प्रवेश गरेर यमराजको कारागारका समान अहिरावणको पुरीलाई ध्वंस गर्नुभयो र उसको भुजा (हात, पाखुरा) भाँचिदिनुभयो।

**बायें भुजा असुर दल मारे। दहिने भुजा संतजन तारे॥ ८ ॥**

**सुर नर मुनि आरती उतारे। जै जै जै हनुमान उचारे॥ ९ ॥**

महावीर हनुमान्‌जीले आफ्नो देब्रे हातद्वारा असुरहरूलाई संहार गर्नुहुन्छ र दाहिने हातद्वारा सन्तहरूको उद्‌धार गर्नुहुन्छ। सुर, नर, मुनि

सबैले उहाँको आरती गर्ने गर्छन् र सधैं नै 'हनुमान्जीको जय होस्! जय होस्! जय होस्!' को उद्घोष गर्ने गर्छन्।

**कंचन थार कपूर लौ छाई। आरति करत अंजना माई॥ १०॥**

**जो हनुमान (जी) की आरति गावै। बसि बैकुंठ परमपद पावै॥ ११॥**

सुनको थालमा कपूर जलाएर माता अञ्जनाले आफ्नो छोरा हनुमान्जीको आरती गर्ने गर्नुहुन्छ। जसले हनुमान्जीको यस आरतीलाई गान गर्नेछ उसलाई निश्चय नै वैकुण्ठपरमपदको प्राप्ति हुनेछ।

**॥ इति ॥**

